**ॐ ॥ श्री गणेशाय नमः ॥ श्री परमात्मने नमः**

**॥ अथ बृहस्पतिस्मृतिः ॥**

**इष्ट्वा क्रतुशतं राजा समाप्तवरदक्षिणम् ।**
**भगवन्तं गुरुं श्रेष्ठं पर्य्यपृच्छद् बृहस्पतिम् ॥१॥**

(ब्राह्मणबाट) प्राप्त गरिएको उत्तम दक्षिणा दिइने खालका सय वटा यज्ञ गराई राजा इन्द्रले बृहस्पतिसँग सोधे ।

**भगवन् केन दानेन सर्वतः सुखमेधते ।**
**यदक्षयं महार्थं च तन्मे ब्रूहि महातप ॥२॥**

हे भगवन् ! के दान गर्नाले मानिस सबैतिरबाट सुखी हुन्छ ? के दान दिए त्यसको फल कहिल्यै समाप्त हुँदैन र महान फल दिन्छ ? हे महातपस्वी ! त्यो कुरा मलाई उपदेश दिनुहोस् ।

**एवमिन्द्रेण पृष्टोऽसौ देवदेवपुरोहितः ।**
**वाचस्पतिर्महाप्राज्ञो बृहस्पतिरुवाच ह ॥३॥**

यसरी इन्द्रबाट प्रश्न सोधिएपछि देवताका देवता, इन्द्रका गुरु र वाणीका स्वामी महाविद्वान् ती बृहस्पतिले (यसरी) उत्तर दिनुभयो-

**सुवर्णदानं गोदानं भूमिदानं च वासव ।**
**एतत् प्रयच्छमानस्तु सर्वपापैः प्रमुच्यते ॥४॥**

हे इन्द्र ! सुनदान, गाईदान र भूमिदान : यी कुराको दान गर्नाले मानिस सबै खालका पापबाट मुक्त हुन्छ ।

**सुवर्णं रजतं वस्त्रं मणिरत्नं च वासव ।**
**सर्वमेव भवेद्दत्तं वसुधां यः प्रयच्छति ॥५॥**

हे इन्द्र ! जो मानिस भूमिदान गर्दछ, उसले सुन, चाँदी, वस्त्र, मणि, रत्न आदि सबै दान गरे समान हुन्छ ।

**फालकृष्टां महीं दत्त्वा सबीजां सस्यमालिनीम् ।**

**यावत् सूर्य्यकृता लोकास्तावत् स्वर्गे महीयते ॥६॥**

फालीले जोतिएको, बीऊ छरिएको तथा बालीले शोभायमान भएको भूमि दान गर्नाले मानिसले, जबसम्म सूर्य किरणले युक्त हुन्छ तबसम्म स्वर्गको महानतालाई प्राप्त गर्दछ ।

**यत्किञ्चित् कुरुते पापं पुरुषो वृत्तिकर्शितः ।**
**अपि गोचर्म्ममात्रेण भूमिदानेन शुध्यति ॥७॥**

आजीविकाले गर्दा दुखित भएको मानिसले गर्ने जेसुकै पाप पनि गोचर्म मात्र भूमिदानले शुद्ध हुन्छ ।७।

**दशहस्तेन दण्डेन त्रिंशद्दण्डानि वर्त्तनम् ।**
**दश तान्येव विस्तारो गोचर्मैतन्महाफलम् ॥८॥**

दश हाते लौरोको तीस लौरो सिधा नापेर दश लौरो चौडाई नापी गरिने महान फलदायक गोचर्म भूमिदान हुन्छ ।

**सवृषं गोसहस्रं च यत्र तिष्ठत्यतन्द्रितम् ।**
**बालवत्सप्रसूतानां तद् गोचर्म इति स्मृतम् ॥९॥**

साँढे सहित तन्द्राले रहित एक हजार गाई तथा बिहाएका गाईका साना बाच्छाबाच्छी समेत उभिन पुग्ने जति स्थानलाई गोचर्म मानिएको छ ।

**विप्राय दद्याच्च गुणन्विताय तपोनियुक्ताय जितेन्द्रियाय ।**
**यावन्मही तिष्ठति सागरान्ता तावत् फलं तस्य भवेदनन्तम् ॥१०॥**

एक गोचर्म मात्र भूमि पनि गुणी, तप-रत र जितेन्द्रिय ब्राह्मणलाई दान गर्ने व्यक्ति सागर-किनार भएको पृथ्वी रहेसम्म अनन्त फल प्राप्त गर्ने हुन्छ ।

**यथा बीजानि रोहन्ति प्रकीर्णानि महीतले ।**
**एवं कामाः प्ररोहन्ति भूमिदानसमार्जिताः ॥११॥**

जसरी जमिनमा रोपिएका बीज उम्रन्छन् त्यसरी नै भूमि दान गरेर कमाएका चाहनाहरु फल्दछन् फुल्दछन् ।

**यथाप्सु पतितः शक्र तैलविन्दुः प्रसर्पति ।**
**एवं भूमिकृतं दानं सस्ये सस्ये प्ररोहति ॥१२॥**

हे इन्द्र ! जसरी जलमा परेको तेलको थोपा फैलन्छ त्यसरी नै भूमिको गरिएको दान अन्न-अन्नमा बढ्दै जान्छ ।

**अन्नदाः सुखिनो नित्यं वस्त्रदश्चैव रुपवान् ।**
**स नरः सर्वदो भूपो यो ददाति वसुन्धराम् ॥१३॥**

अन्नदान गर्ने सधैं सुखी हुन्छ भने वस्त्र दानगर्ने रुपवान् हुन्छ । त्यो मानिस सर्वस्वदाता राजा हुन्छ जसले भूमिदान गर्दछ ।

**यथा गौर्भरते वत्सं क्षीरमुत्सृज्य क्षीरिणी ।**
**एवं दत्ता सहस्राक्ष ! भूमिर्भरति भूमिदम् ॥१४॥**

जसरी दुहुनु गाईले दुध दिएर बाछाबाछीलाई भरणपोषण गर्दछे त्यसरी नै हे इन्द्र ! दान गरिएको भूमिले दानगर्नेको भरणपोषण गर्दछे ।

**शङ्खं भद्रासनं छत्रं चरस्थावरवारणाः ।**
**भूमिदानस्य पुण्यानि फलं स्वर्गः पुरन्दर ॥१५॥**

शङ्ख, गद्दी, छाता, चल-अचल सम्पत्ति र हात्ती : हे इन्द्र ! यी भूमिदानका पुण्य हुन् र स्वर्ग त्यसको फल हो ।

**आदित्यो वरुणो वह्निर्ब्रह्मा सोमो हुताशनः ।**
**शूलपाणिश्च भगवानभिनन्दति भूमिदम् ॥१६॥**

सूर्य, वरुण, अग्नि, ब्रह्मा, चन्द्रमा, हुताशन र भगवान शिव भूमिदान गर्नेलाई अभिनन्दन गर्दछन् ।

**आस्फोटयन्ति पितरः प्रहर्षन्ति पितामहाः ।**
**भूमिदाता कुले जातः स नस्त्राता भविष्यति ॥१७॥**

पितृहरु पाखुरा ठोक्दछन् तथा पितामहहरु प्रसन्न हुन्छन् र भन्दछन् कि "हाम्रा कुलमा पनि भूमिदान गर्ने जन्मनेछ र त्यसले हाम्रो उद्धार गर्नेछ" ।

**त्रीण्याहुरति दानानि गावः पृथ्वी सरस्वती ।**
**तारयन्ति हि दातारं सर्वात्पापादसंशयम् ॥१८॥**

तीन दानलाई महान दान बताउँछन् - गाई, पृथ्वी र विद्या । यसले दातालाई निःस्सन्देह सबै पापबाट पार गराउँदछ ।

**प्रावृता वस्त्रदा यान्ति नग्ना यान्ति त्ववस्त्रदाः ।**
**तृप्ता यान्त्यग्निदातारः क्षुधिता यान्त्यनन्नदाः ॥१९॥**

वस्त्र दान गर्नेको शरीर ढाकिन्छ, नगर्ने नाङ्गै हुन्छन् । अन्न दान गर्ने सधैं तृप्त हुन्छन्, नगर्ने भोकै हुन्छन् ।

**काङ्क्षन्ति पितरः सर्वे नरकाद्भयभीरवः ।**
**गयां यो यास्यति पुत्रः स नस्त्राता भविष्यति ॥२०॥**

नरकबाट डराएका सबै पितृहरु यो कामना गर्दछन् कि-"जो पुत्र गया जाला त्यो हाम्रो रक्षक होला" ।

**एष्टव्या बहवः पुत्राः यद्येकोऽपि गयां व्रजेत् ।**
**यजेत वाऽश्वमेधेन नीलं वा वृषमुत्सृजेत् ॥२१॥**

धेरैवटा छोराको कामना गर्नु ता कि कुनै एक गया जाला, कुनै एक अश्वमेध यज्ञ गर्ने होला वा कुनै एक नील वृषोत्सर्ग गर्ने होला ।

**लोहितो यस्तु वर्णेन पुच्छाग्रे यस्तु पाण्डुरः ।**
**श्वेतः खुरविषाणाभ्यां स नीलो वृष उच्यते ॥२२॥**

जो रङमा रातो हुन्छ, जसको पुच्छरको टुप्पो पहेँलो हुन्छ, जसका सिङ र खुर सेताहुन्छन्, त्यसलाई नीलो साँढे भनिन्छ ।

**नीलः पाण्डुरलांगूलस्तृणमुद्धरते तु यः ।**

षष्टिवर्षसहस्राणि पितरस्तेन तर्पिताः ॥२३॥

पहेँलो पुच्छर हुने नीलो साँढेले जमिनबाट एक त्यान्द्रो घाँस मात्रै उठाउँदछ भनेपनि वृषोत्सर्ग गर्नेका पितृहरु बीस हजार वर्षसम्म तृप्त हुन्छन् ।

यच्च श्रृङ्गगतम्पङ्कं कूलात् तिष्ठति चोद्धृतम् ।
पितरस्तस्य गच्छन्ति सोमलोकं महाद्युतिम् ॥२४॥

जसको सिङमा नदीको किनाराको खोस्रेको माटो लागेको छ त्यस्तो वृषभले वृषोत्सर्ग गर्नेका पितृहरु अति तेजिलो चन्द्रलोकमा जान्छन् ।

पृथोर्यदोर्दिलीपस्य नृगस्य नहुषस्य च ।
अन्यषाञ्च नरेन्द्राणां पुनरन्या भविष्यति ॥२५॥

पृथु, यदु, दिलीप, नृग, नहुष जस्तै भूमि दानगर्ने अरु राजाहरु फेरी अर्को पृथ्वीलाई प्राप्त गर्दछन् ।

बहुभिर्वसुधा दत्ता राजभिः सागरादिभिः ।
यस्य यस्य यथा भूमिस्तस्य तस्य तथा फलम् ॥२६॥

सागर आदि गरिएका धेरै राजाले पृथ्वीको दान गरेका थिए र जसजसले जस्तो भूमि दान गरेका थिए तिनले त्यस्तै त्यस्तै फल प्राप्त गरेका थिए ।

यस्तु ब्रह्मघ्नः स्त्रीघ्नो वा यस्तु वै पितृघातकः ।
गवां शतसहस्राणां हन्ता भवति दुष्कृती ॥२७॥

जो व्यक्ति ब्राह्मण, स्त्री र पिताको हत्यारा हुन्छ, त्यो पापी एक लाख गाईको हत्यारा हुन्छ ।

स्वदत्तां परदत्तां वा यो हरेच्च वसुन्धराम् ।
श्वविष्ठायां क्रिमिर्भूत्वा पितृभिः सह पच्यते ॥२८॥

जो आफूले दान दिएको वा अर्काले दान दिएको जमिन खोस्दछ, त्यो कुकुरको गुहुको किरा हुन्छ र पितृसमेत त्यसरी पकाइन्छ ।

आक्षेप्ता चानुमन्ता च तमेव नरकं व्रजेत् ।
भूमिदो भूमिहर्त्ता च नापरं पुण्यपापयोः ॥
ऊद्‌र्ध्वाधो वाह्मवतिष्ठेत यावदाभूतसंप्लवम् ॥२९॥

खोस्ने र खोस्न अनुमति दिने दुवै जना एउटै नरकमा पर्दछन् अन्त होइन । भूमि दानगर्ने र भूमि खोस्ने दुवै आफूले गरेको पुण्य र पापका कारण क्रमशः स्वर्ग र नरकमा प्रलय नभएसम्म बस्दछन् ।

अग्नेरपत्यं प्रथमं सुवर्णं भुर्वैष्णवी सूर्यसुताश्च गावः ।
लोकास्त्रयस्तेन भवन्ति दत्ता यःकाञ्चनं गाञ्च महीञ्च दद्यात् ॥३०॥

सुन अग्निको पहिलो सन्तान हो, पृथिवी विष्णुकी छोरी हुन् र गाईहरु सूर्यका छोरी हुन् । त्यसैले यी तीन कुरा सुन, गाई र पृथिवी दान गर्नाले तीनै लोकको दान हुन जान्छ ।

षडशीतिसहस्राणां योजनानां वसुन्धरा ।
स्वतो दत्ता तु सर्वत्र सर्वकामप्रदायिनी ॥३१॥

यो पृथ्वी छयासी हजार योजनकी छिन् । स्वयंदत्ता यी पृथ्वी सबै इच्छालाई पूरा गर्ने खालकी छिन् ।

भूमिं य प्रतिगृह्णाति भूमिं यश्च प्रयच्छति ।
उभौ तौ पुण्यकर्माणौ नियतं स्वर्गगामिनौ ॥३२॥

जसले भूमिदान लिन्छ तथा जसले भूमिदान दिन्छ, ती दुवै पुण्यकर्मका कर्ता हुन्छन् र निश्चितरुपले स्वर्ग जान्छन् ।

सर्वेषामेव दानानामेकजन्मानुगं फलम् ।
हाटकक्षितिगौरीणां सप्तजन्मानुगं फलम् ॥३३॥

सबै अरु कुराको दानको फल एक जन्मसम्मका लागि हुन्छ तर सुन, भूमि र गाई दानको फल सात जन्मको लागि हुन्छ ।

यो न हिंस्यादहं ह्यात्मा भूतग्राम चतुर्विधम् ।
तस्य देहाद्वियुक्तस्य भयं नास्ति कदाचन ॥३४॥

"आत्माको रुपमा म नै सबै प्राणीमा बस्दछु" भन्ने सोची चार प्रकारका (जरायुज, अण्डज, स्वेदज र उद्भिज) प्राणीको जसले हिंसा गर्दैन, शरीर त्यागेर पनि उसलाई डर हुँदैन ।

**अन्यायेन हृता भूमिर्यैर्नरैरपहारिता ।**
**हरन्तो हारयन्तश्च हन्युस्ते सप्तमं कुलम् ॥३५॥**

अन्यायपूर्वक जसबाट जमिन खोसिन्छ वा जसबाट खोस्न लगाइन्छ, ती खोस्ने र खोस्न लगाउने आफ्ना सात कुललाई पतन गर्दछन् ।

**हरते हारयेद्यस्तु मन्दबुद्धिस्तमोवृतः ।**
**स वध्यो वारुणैः पाशैस्तिर्यग्योनिषु जायते ॥३६॥**

अज्ञानी र मन्दबुद्धिको जो व्यक्ति कसैको जमिन खोस्दछ वा खोस्न लगाउँदछ, त्यो वरुणको पाशोले बाँधिएर पशु भई जन्मन्छ ।

**अश्रुभिः पतितैस्तेषां दानानामपकीर्त्तनम् ।**
**ब्राह्मणस्य हृते क्षेत्रे हन्ति त्रिपुरुषं कुलम् ॥३७॥**

ब्राह्मणको खेत खोसे आँशुले गर्दा खोस्नेको तीन कुल नष्ट हुन्छ र यसले दानको समेत बदनाम हुन्छ ।

**वापीकूपसहस्रेण अश्वमेधशतेन च ।**
**गवां कोटिप्रदानेन भूमिहर्त्ता न शुध्यति ॥३८॥**

कुवाकुण्ड हजार खनाएर, सय अश्वमेध गरेर वा एक करोड गाई दान गरेर पनि जमिन खोस्ने व्यक्ति शुद्ध हुँदैन ।

**गामेकां स्वर्णमेकं वा भूमेरप्यर्द्धमङ्गुलम् ।**
**रुन्धन्नरकमायाति यावदाभूतसंप्लवम् ॥३९॥**

एउटा गाई, सुनको एउटा सिक्का वा आधा अङ्गुल जमिन हरण गर्ने व्यक्ति पनि प्रलयकालसम्म नरकमा पर्दछ ।

**हुतं दत्तं तपोऽधीतं यत्किञ्चिद्धर्मसञ्चितम् ।**

**अर्द्धाङ्गुलस्य सीमाया हरणेन प्रणश्यति ॥४०॥**

यज्ञ, दान, तप, स्वध्याय आदि गरी जेजति धर्म कमाइएको छ ती सबै आधा अङ्गुल सीमा मिच्नाले नष्ट हुन्छ ।

**गोवीथीं ग्रामरथ्याञ्च श्मशानं गोपितं तथा ।**
**सम्पीड्य नरकं याति यावदाभूतसंप्लवम् ॥४१॥**

गाई हिँड्ने गौँडो, गाऊँको बाटो, मसान र संरक्षित स्थान मिच्ने व्यक्ति संसारको प्रलय नभएसम्म नरकमा पर्दछ ।

**ऊषरे निर्जले स्थाने प्रास्तं शस्यं विवर्जयेत् ।**
**जलाधारश्च कर्तव्यो व्यासस्य वचनं यथा ॥४२॥**

बञ्जर तथा पानी नभएका स्थानमा खेती गर्न छोड्नू । जहाँ पानी छ त्यहीँ रोप्नू, यस्तो व्यास ऋषिको वचन छ ।

**पञ्च कन्यानृतं हन्ति दश हन्ति गवानृतम् ।**
**शतमश्वानृतं हन्ति सहस्रं पुरुषानृतम् ॥४३॥**

कन्याका लागि बोलिएको झुटले पाँच, गाईको लागि बोलिएकोले दश, घोडाका लागि बोलिएकोले सय र पुरुषका लागि बोलिएको झुटले हजार लाई मार्दछ ।

**हन्ति जातानजातांश्च हिरण्यार्थेऽनृतं वदन् ।**
**सर्वं भूम्यनृतं हन्ति मा सम भूम्यनृतं वदीः ॥४४॥**

सुनका लागि झुट बोले बोल्नेका जन्मिसकेका र जन्मन बाँकी सबैलाई मार्दछ । भूमिका लागि बोलेको झुटले सबैलाई मार्दछ, त्यसैले भूमिका लागि झुटो नबोल ।

**ब्रह्मस्वे मा रतिं कुर्याः प्रणैः कण्ठगतैरपि ।**
**अनौषधमभैषज्यं विषमेतद् हलाहलम् ॥४५॥**

प्राणकण्ठमा पुगेको अवस्थामा पनि ब्राह्मणको धनमा लोभ नगर्नू, यो यस्तो हलाहल विष हो जसको न कुनै औषधी छ न त उपचार नै ।

**न विषं विषमित्याहुर्ब्रह्मस्वं विषमुच्यते ।**
**विषमेकाकिनं हन्ति ब्रह्मस्वं पुत्रपौत्रकम् ॥४६॥**

विषलाई विष मानिँदैन ब्राह्मणको धनलाई विष भनिएको छ । विषले खानेलाई मात्र मार्दछ तर ब्राह्मणको धनले छोरानातीलाई पनि मार्दछ ।

**लोहखण्डाश्मचूर्णं च विषञ्च जरयेन्नरः ।**
**ब्रह्मस्वं त्रिषु लोकेषु कः पुमान् जरयिष्यति ॥४७॥**

मानिसले फलामका टुक्रा, ढुङ्गाको धुलो र विष पनि पचाउन सक्ला तर तीनै लोकमा को होला जो ब्राह्मणको धन पचाउला ।

**मन्युप्रहरणा विप्रा राजानः शस्त्रपाणयः ।**
**शस्त्रमेकाकिनं हन्ति विप्रमन्युः कुलत्रयम् ॥४८॥**

ब्राह्मण क्रोधरुपी हतियार धारण गर्दछन् भने राजाहरु शस्त्र हातमा बोक्दछन् । शस्त्रले एउटालाई मार्दछ भने ब्राह्मणको क्रोधले तीन पुस्तालाई मार्दछ ।

**मन्युप्रहरणा विप्राश्चक्रप्रहरणो हरिः ।**
**चक्रात्तीव्रतरो मन्युस्तस्माद्विप्रं न कोपयेत् ॥४९॥**

ब्राह्मण क्रोधरुपी हतियार धारण गर्दछन् भने विष्णु चक्ररुपी हतियार । क्रोध चक्रभन्दा तेजिलो हुन्छ । यसैले ब्राह्मणलाई रिस नउठाउनू ।

**अग्निदग्धा प्ररोहन्ति सूर्यदग्धास्तथैव च ।**
**मन्युदग्धस्य विप्राणामङ्कुरो न प्ररोहति ॥५०॥**

आगो वा सूर्यले डढाएको फेरी पलाउँछ तर ब्राह्मणको क्रोधले डढे पालुवा समेत पलाउँदैन ।

**अग्निर्दहति तेजसा सूर्यो दहति रश्मिभिः ।**
**राजा दहति दण्डेन विप्रो दहति मन्युना ॥५१॥**

आगो तेजले, सूर्य किरणले, राजा दण्डले तथा ब्राह्मण क्रोधले जलाउँदछन् ।

**ब्रह्मस्वेन तु यत् सौख्यं देवस्वेन तु या रतिः ।**
**तद्धनं कुलनाशाय भवत्यात्मविनाश्नम् ॥५२॥**

ब्राह्मणको धनले जुन सुख मिल्दछ तथा देवधनले (तत्काललाई) जुन प्रसन्नता मिल्दछ, आत्माको नाश गर्ने त्यो धन कुलको समेत नाश गर्ने हुन्छ ।

**ब्रह्मस्वं ब्रह्महत्या च दरिद्रस्य च यद्धनम् ।**
**गुरुमित्रहिरण्यञ्च स्वर्गस्थमपि पीडयेत् ॥५३॥**

ब्राह्मणको धन, ब्राह्मणको हत्या, गरिबको धन तथा गुरु एवं मित्रको सुन यि कुराहरुले स्वर्गमा बस्नेलाई पनि दुःख दिन्छ ।

**ब्रह्मस्वेन तु यच्छिद्रं तच्छिद्रं न प्ररोहति ।**
**प्रच्छादयति तच्छिद्रमन्यत्र तु विसर्पति ॥५४॥**

ब्राह्मणको धनले जुन घाउ बन्दछ त्यो घाऊ कहिल्यै भरिँदैन, एकातिर छोपिए (वा निको भए) भने अर्कोतिर निक्लन्छ ।

**ब्रह्मस्वेन तु पुष्टानि साधनानि बलानि च ।**
**संग्रामे तानि लीयन्ते सिकतासु यथोदकम् ॥५५॥**

ब्राह्मणको धनले पुष्ट भएका साधन र सेना युद्धमा त्यसरी नै नष्ट हुन्छन् जसरी बालुवामा पानी नष्ट हुन्छ ।

**श्रोत्रियाय कुलीनाय दरिद्राय च वासव ।**
**सन्तुष्टाय विनीताय सर्वभूतहिताय च ॥५६॥**
**वेदाभ्यासस्तपो ज्ञानमिन्द्रियाणां च संयमः ।**
**ईदृशाय सुरश्रेष्ठ ! यद्दत्तं हि तदक्षयम् ॥५७॥**

हे इन्द्र ! वेदपाठी, कुलीन, दरिद्र, सन्तोषी, नम्र, सबैलाई हित गर्न लागिपर्ने तथा वेदाभ्यासी, तपी, ज्ञानी र इन्द्रिय-संयमी यस्ता ब्राह्मणलाई जो दान दिइन्छ त्यो कहिल्यै नाश हुँदैन ।

**आमपात्रे यथान्यस्तं क्षीरं दधि घृतं मधु ।**

विनश्येत्पात्रदौर्बल्यात्तच्च पात्रं विनश्यति ॥५८॥
एवं गाश्च हिरण्यञ्च वस्त्रमन्नं महीं तिलान् ।
अविद्वान् प्रतिगृह्णाति भस्मीभवति काष्ठवत् ॥५९॥

जसरी कमजोर भाँडामा राखिएका दूध, दही, घिउ र मह भाँडाको दुर्बलताले गर्दा नष्ट हुन्छन् र भाँडो आफैं पनि नष्ट हुन्छ त्यसैगरी जो व्यक्ति मूर्खलाई गाई, सुन, वस्त्र, अन्न, भूमि र तिल दान गर्दछ त्यो दान : दाउरा भस्म भएझैं भस्म हुन्छ ।

यस्य चैव गृहे मूर्खो दूरे चापि बहुश्रुतः ।
बहुश्रुताय दातव्यं नास्ति मूर्खे व्यतिक्रमः ॥
कुलं तारयते धीरः सप्त सप्त च वासव ॥६०॥

हे इन्द्र ! घरमा (वा नजिकमा) मूर्ख र पर विद्वान ब्राह्मण हुँदा विद्वानलाई नै दान दिनू । यसोगर्दा घरकोलाई नटेरेको वा अतिक्रमण गरेको मानिदैन । यसो गर्ने बुद्धिमानले अघिपछिका सात-सात कुललाई भवसागर पार गराउँदछ ।

यस्तडाकं नवं कुर्य्यात् पुराणं वाऽपि खानयेत् ।
स सर्वं कुलमुद्धृत्य स्वर्गे लोके महीयते ॥६१॥

जसले नयाँ पोखरी बनाउन लगाउँदछ वा पुरानो पोखरी मर्मत गराउँदछ उसले आफ्ना सबै कुलको उद्धार गरी स्वर्गलोकमा महानता प्राप्त गर्दछ ।

वापीकूपतडागानि उद्यानोपवनानि च ।
पुनः संस्कारकर्त्ता च लभते मौलिकं फलम् ॥६२॥

कुण्ड, कुवा, पोखरीको तथा वनवाटिकाको मर्मत गराउनेले पनि बनाउनेले पाउने जति नै फल प्राप्त गर्दछ ।

निदाघकाले पानीयं यस्य तिष्ठति वासव ।
स दुर्गं विषमं कृत्स्नं न कदाचिदवाप्नुयात् ॥६३॥
हे इन्द्र ! ग्रीष्म ऋतुमा जसका घरमा अरुलाई पियाउन पानी हुन्छ, त्यसले कहिल्यै पनि अती कठीन सङ्कटमा पर्नु पर्दैन ।

एकाहं तु स्थितं तोयं पृथिव्यां राजसत्तम ।

कुलानि तारयेत्तस्य सप्त सप्त पराण्यपि ॥६४॥

हे नृपश्रेष्ठ ! जसको जमिनमा एक दिन मात्र भएपनि पानी (तिर्खाएकाले पिउने गरी) रहन्छ, उसले आफ्ना बितेका सात र आउने सात पुस्ताको उद्धार गर्दछ ।

दीपालोकप्रदानेन वपुष्मान् स भवेन्नरः ।
प्रोक्षणीयप्रदानेन स्मृतिं मेधाञ्च विन्दति ॥६५॥

दीपको प्रकाश दान दिने पुरुष सुन्दर शरीरवाला हुन्छ भने जल दान दिने पुरुषलाई सम्झनाशक्ति र बुद्धि प्राप्त हुन्छ ।

कृत्वाऽपि पापकर्म्माणि यो दद्यादन्नमर्थिने ।
ब्राह्मणाय विशेषेण न स पापेन लिप्यते ॥६६॥

पाप गरेर पनि जसले भिक्षुकलाई अझ विशेष गरी ब्राह्मणलाई अन्न दान दिन्छ उ पापबाट लिप्त हुँदैन ।

भूमिर्गावस्तथा दाराः प्रसह्यह्रियन्ते यदा ।
न चाऽऽवेदयते यस्तु तमाहुर्ब्रह्मघातकम् ॥६७॥

भूमि, गाई र स्त्रीलाई जबरजस्ती हरण गरेको थाहापाएर पनि राजालाई नभन्नेलाई ब्रह्मघातक भनिन्छ ।

निवेदितस्तु राजा वै ब्राह्मणैर्मन्युपीडितैः ।
न निवारयते यस्तु तमाहुर्ब्रह्मघातकम् ॥६८॥

यस्तै रिसले भड्केका ब्राह्मणबाट हरणको सूचना पाएर पनि जुन् राजा त्यसलाई रोक्दैन उसलाई ब्रह्मघातक भनिन्छ ।

उपस्थिते विवाहे च यज्ञे दाने च वासव ।
मोहाच्चरति विघ्नं यः स मृतो जायते क्रिमिः ॥६९॥

हे इन्द्र ! विवाह, यज्ञ तथा दानको समय आउँदा अज्ञानले बाधा पुऱ्याउने व्यक्ति मरेपछि कीरा भएर जन्मन्छ ।

**धनं फलति दानेन जीवितं जीवरक्षणात् ।**
**रुपमैश्वर्यमारोग्यमहिंसाफलमश्नुते ॥७०॥**

धन दान गर्नाले र जीवन (आयु) जीवको रक्षा गर्नाले बढ्दछ । यसरी नै मानिसको रुप, ऐश्वर्य र आरोग्य अहिँसाले बढ्दछ ।

**फलमूलाशनात् पूज्यं स्वर्गं सत्येन लभ्यते ।**
**प्रायोपवेशनाद्राज्यं सर्वत्र सुखमश्नुते ॥७१॥**

फलफूल र कन्दमूल खानाले मानिस पूजिन्छ । सत्यले स्वर्ग पाइन्छ । उपवास बसी प्राणत्यागको प्रतिक्षा गर्नेले राज्य र सबै सुख भोग्दछ ।

**गवाढ्यः शक्र दीक्षायाः स्वर्गगामी तृणाशनः ।**
**स्त्रियस्त्रिषवणस्नायी वायुं पीत्वा क्रतुं लभेत् ॥७२॥**

हे इन्द्र ! दीक्षाले गाईको धनी, तृणाशनीले स्वर्ग र त्रिकालषवणमा (बिहान, मध्याह्न र साँझमा तीन पटक देवतालाई आहुति दिनका लागि नुहाएर वा ननुहाई सोमरस खाइने विधान) नुहाउनाले स्त्रीको प्राप्ती हुन्छ । वायु भक्षणबाट यज्ञको फल प्राप्त हुन्छ ।

**नित्यस्नायी भवेदर्कः सन्ध्ये द्वे च जपन् द्विजः ।**
**नवं साधयते राज्यं नाकपृष्ठमनाशकम् ॥७३॥**

नित्यस्नान गर्ने सूर्यसमान (तेजिलो) हुन्छ । दुवै सन्ध्यामा गायत्री जप गर्दै द्विज हुन्छ र नयाँ राज्य एवं अविनाशी स्वर्ग प्राप्त गर्दछ ।

**अग्निप्रवेशे नियतं ब्रह्मलोके महीयते ।**
**रसनाप्रतिसंहारे पशून् पुत्रांश्च विन्दति ॥७४॥**

अग्निप्रवेश मार्फत निश्चय नै ब्रह्मलोकमा पूजिने छ । जीभ्रो वशमा राखे उसलाई पशु-पुत्रको प्राप्ति हुन्छ ।

**नाके चिरं स वसते उपवासी च यो भवेत् ।**
**सततं चैकशायी यः स लभेदीप्सिताङ्गतिम् ॥७५॥**

उपवास बस्ने लामो समय स्वर्गमा बस्दछ । आफ्नी पत्नीसँग मात्र सुत्नेले मनवाञ्छित गति पाउँदछ ।

**वीरासनं वीरशय्यां वीरस्थानमुपाश्रितः ।**
**अक्षय्यास्तस्य लोका स्युः सर्वकामागमास्तथा ॥७६॥**

जो मानिस वीरासन (एक हठयोगको आसन), वीरशैया ? र वीरस्थान ? को सहारा लिन्छ उसलाई कहिल्यै नाश नहुने लोक प्राप्त हुन्छ र उसका सबै कामना पनि पूरा हुन्छन् ।

**उपवासञ्च दीक्षाञ्च अभिषेकञ्च वासव ।**
**कृत्वा द्वादशवर्षाणि वीरस्थानाद्विशिष्यते ॥७७॥**

हे इन्द्र ! बाह्र वर्षसम्म उपवास, दीक्षा र अभिषेक गर्नाले मानिस वीरस्थानको सहारा लिनेभन्दा पनि विशिष्ट हुन पुग्दछ ।

**अधीत्य सर्ववेदान् वै सद्यो दुःखात् प्रमुच्यते ।**
**पावनं चरते धर्मं स्वर्गे लोके महीयते ॥७८॥**

सबै वेद अध्ययन गर्नाले तुरुन्त दुःखबाट मुक्त हुन्छ । पवित्र धर्मको आचरण गर्नाले स्वर्गलोकमा पूजिन्छ ।

**बृहस्पतिमतं पुण्यं ये पठन्ति द्विजातयः ।**
**चत्वारि तेषां वर्धन्ते आयुर्विद्या यशो बलम् ॥७९॥**

जो द्विज बृहस्पतिको यो पवित्र विचारलाई पठन र मनन गर्दछ उसका आयु, विद्या, यश र बल गरी चारै थोके बढ्दछन् ।

**॥ इति बृस्पतिप्रणीतं धर्म्मशास्त्रं सम्पूर्णम् ॥**
**॥ समाप्ता चेयं बृहस्पतिस्मृतिः ॥**
**॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको बृहस्पतिस्मृतिको नेपाली भावानुवाद समाप्त भयो ॥**
**सबैको कल्याण होस् !**